# वामी-विश्व सम्पर्क मञ्च, नौमती सांस्कृतिक समितिको नियमावली-२०७६






## वामी-विश्व सम्पर्क मञ्च

## नौमती सांस्कृतिक समिति

आदरणीय सम्मानित विश्वभर छरिएर रहनुभएका वामीली साथीहरु,

वामी-विश्व सम्पर्क मञ्च, नौमति बाजा महोत्सव तथा साँस्कृतिक समिति को छलफल ग्रुप, समन्वय समिति र मुल समितिका पदाधिकारीहरुको आधिकारिक ग्रुप वाल तथा सचिवालय सदस्यहरू बिचमा गरिएका विभिन्न अनलाइन बैठकहरुद्वारा पारित धारणा तथा निर्णयहरुलाई मध्येनजर गर्दै वामी विश्व सम्पर्क मञ्चको विधान नबाझिने गरी तपसिलका नियमावलीहरु निर्माण गरिएको छ:

१. वामी-विश्व सम्पर्क मञ्चको मूल विधानको भावना र मर्मलाई सम्मान हुने गरी सांस्कृतिक समिति मार्फत सांस्कृतिक कार्यक्रम सन्चालन गरिनेछ।

२. (क) नौमती सांस्कृतिक महोत्सवको अक्षय कोष स्थापना तथा आगामी २०७७ को कार्यक्रम सन्चालनार्थ बजेट संकलनको लागि विभिन्न नयाँ गतिविधिहरू गरिनेछ।

(ख) नौमती सांस्कृतिक महोत्सवको छुट्टै कोष तथा बैंक खाता हुनेछ। यस खातामा सांस्कृतिक कार्यक्रम-२०७७ सम्पन्न पश्चात बँचेको कोष (मुल रकम) को ब्याज मात्र अर्को नयाँ सांस्कृतिक समितिहरुले नौमती बाजा महोत्सव तथा साँस्कृतिक कार्यक्रमको लागि प्रयोग गर्न पाउने अधिकार रहनेछ।

३. सांस्कृतिक समिति-२०७७ का कार्य समिति पदाधिकारी सदस्य लगायतका सबै व्यक्तित्व ज्यूहरुबाट मसलन्द खर्च आदिको लागि स्वेच्छिक रकम उठाउन सकिनेछ।

४. कार्यक्रमलाई दिगो र सफल बनाउन निम्नानुसारको व्यवस्था गरिएको छ:

(क) वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षक:- रु.१,११,१११ वा सो भन्दा बढी।

(ख) वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन संरक्षक:- रु. ५५,५५५/- वा सो भन्दा बढी।

(ग) वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन  सदस्य:- रु. २२,२२२/- वा सो भन्दा बढी।

माथि उल्लेखित रकम प्रदान गर्नुहुने संस्कृतिप्रेमी व्यक्तित्वहरुलाई क्रमशः गुणस्तरीय फ्रेम सहित स्वर्णाक्षर अंकित कदर पत्र, ताम्राक्षर अंकित कदर पत्र र सिल्भर अंकित कदर पत्रले सम्मान गरिनेछ। यस्ता संरक्षकहरुबाट लिइएको रकमबाट कुल पचास प्रतिशत रकम अनिवार्य सांस्कृतिक अक्षय कोषमा राख्नु पर्नेछ।

५. कार्यक्रम भव्यताका साथ सम्पन्न गर्नको लागि र सांस्कृतिक कोष बलियो बनाउन जो कोहि महान सांस्कृतिक मनहरुले रु. ३ लाख भन्दा बढी दिएको खण्डमा हौसला स्वरूप 'डोनर किंग अफ दि ईयर' घोषणा गरी नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षकको स्वर्णाक्षर कदरपत्रको साथमा विशेष साँस्कृतिक अवार्ड समेतले विभुषित गरिनेछ।  त्यस्ता महान दानवीर व्यक्तित्वहरुको स-सम्मान नौमती बाजाका साथमा कार्यक्रम स्थलमा लैजाने तथा उच्चकोटिको सम्मान गरिनेछ।

६. २०७७ को कार्यक्रमका तीन जना ठूला चन्दादाताहरुलाई कार्यक्रम अवधि मै सम्मान गरिनेछ।

७. यस सालको अन्त्य सम्म वामीमा विद्यालय स्तरीय 'मौलिकता की आधुनिकता' शिर्षकमा वक्तृत्वकला/वादविवाद प्रतियोगिता आयोजना गरिनेछ।

८. वामीलाई चिन्ने/वामीले रुचाउने मौलिक पुराना भाकाहरूको पहिचान गरी वामीली स्वादका पुराना भाकाहरु पनि रेकर्डिङ गर्दै लगिनेछ।

९. साँस्कृतिक समितिमा दुइजना सल्लाहकार सहित सात जना कार्यकारी सदस्य, एघार सदस्यिय सचिवालय, समावेशी सहभागिता रहने गरी ठुलो सङ्ख्यामा सल्लाहकार तथा सदस्यहरु  रहनेछन्। वामी स्थित सबै युवा क्लब, सबै आमा समूह र सबै विद्यालयबाट

एक/एक जना प्रतिनिधिहरु यस साँस्कृतिक समितिमा सहभागी गराई सबै वामिलिको अपनत्व हुने गरी समितिलाई पूर्णता दिइनेछ।

१०. साँस्कृतिक संरक्षकहरुमा मुसिकोट नगरपालिकाका नगर प्रमुख, वार्ड नं. ७ र ८ का अध्यक्ष तथा प्रदेश पाँचका माननिय सभाषद सोहि क्षेत्रबाट निर्वाचित भएकोले (पदेन संरक्षक) रहने छन्।

११. सचिवालयले सबै जसो कार्यहरु/निर्णयहरु स्वविवेकले पारित गरेर अघि बढ्न पाउनेछ।

१२. मुल समिति र समन्वय समितिले बेला-बेला दिइरहेको सुझाव र अभिव्यक्तिको भने उच्च सम्मान र मनन गरिनेछ।

१३. सूचना तथा सञ्चारको लागि एक जना प्रमुख र एक जना सहयोगीलाई नियुक्त गरिनेछ।

१४. वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षक, वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन संरक्षक र वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन सदस्य सबैलाई विश्व सम्पर्क मञ्चको भवन निर्माण गर्दा साँस्कृतिक स्तम्भ निर्माण गरी स्तम्भमा उहाँहरुको सम्मान स्वरुप शिलाक्षरमा नाम र रकम समेत लेखिनेछ।

१५. वामी-विश्व सम्पर्क मञ्च, नौमती सांस्कृतिक आजीवन विशिष्ट संरक्षक, आजीवन संरक्षक र आजीवन सदस्यहरुलाई क्रमशः ३, २ र १ पोइन्टको अधिकार सहित अनन्तकाल सम्म सांस्कृतिक समिति निर्माणमा गरिमामय भुमिका निर्वाह गर्नका लागि ३० प्रतिशत अधिकार सुनिश्चित गरिएको छ भने मूल समिति र समन्वय समितिमा ३०-३० प्रतिशत र सांस्कृतिक सचिवालयलाई मात्र १० प्रतिशत अधिकार प्राप्त हुनेछ।

** यस नियमावली निर्माणमा अमूल्य समय र विज्ञता प्रदान गर्नुहुने आदरणीय प्रा. डा. जिवलाल सापकोटा ज्यू प्रति हार्दिक आभार व्यक्त गर्दछौं।*

**अध्यक्ष**

**वैकुण्ठ रायमाझी**

**महासचिव**

**हेमनाथ खराल**

**संस्थापक समितिको सचिवालय मार्फत सार्वजनिक गरिएका महत्वपूर्ण निर्णय वा व्यवस्थाहरूको बारेमा यहाँ चर्चा गरिएको छ:**

वामी सेरोफेरोका ऐतिहासिक महत्व बोकेका सबैखाले संस्कृतिहरुको जगेर्ना, संवर्द्धन तथा साँस्कृतिक प्रवर्द्धन नै हाम्रो मुख्य उद्देश्य रहेको छ।

साँस्कृतिक अक्षय कोष स्थापनाको शुभारम्भ गरेको संस्थापन समितिको सचिवालय द्वारा अनुमोदित व्यक्ति नै भावी समितिमा कार्यकारी नेतृत्वमा रहन पाउने प्रावधानको व्यवस्था गरिएको छ। साथै वामी-विश्व सम्पर्क मञ्च, नौमती बाजा महोत्सव तथा साँस्कृतिक विधामा हुने सबै खाले गतिविधिमा संस्थापक सचिवालयको औचित्य जीवन्त रहने छ।

यस समितिले आजीवन विशिष्ट संरक्षक, आजीवन संरक्षक र आजीवन सदस्यहरु मार्फत उठाएको रकमबाट कम्तिमा पनि पचास प्रतिशत रकम अक्षय कोषमा जम्मा गरिनेछ। तत्पश्चात अक्षयकोष मुल रकमको ब्याजबाट आएको रकम मात्र नयाँ समितिले साँस्कृतिक कार्यक्रमको लागि खर्च गर्न पाउने व्यवस्था गरिएको छ।

तीनै किसिमका दानदाताहरुलाई नौमती बाजा बजाउँदै, पञ्चकन्या सहित स्वर्ण, ताम्र वा सिल्भर कदरपत्रहरु द्वारा सम्मान गरिनेछ। वामी-विश्व सम्पर्क मञ्चको आधिकारिक फेसबुक पेज मार्फत आकर्षक फ्रेम सहित को फोटो बनाएर शेयर र सम्मान गरिनेछ।

साथै वामी-विश्व सम्पर्क मञ्चको केन्द्रिय कार्यालय भवन निर्माणको क्रममा एउटा साँस्कृतिक स्तम्भ निर्माण गरेर तीनै थरी दानदाताहरुको नाम क्रमबद्ध रूपमा शिलालेखमा सुरक्षित गरिनेछ। ताकि दानवीरहरुका सन्तान, दरसन्तानहरु कालान्तरमा आफ्ना साँस्कृतिक मनका धनी पिता पुर्खाको नाम खोज्न बेलायत, अमेरिका, क्यानडा लगायतका सुदुर देशहरुबाट वामी आउँदै गरुन्।

उल्लेखित सबै सम्मान भन्दा झनै आकर्षक साँस्कृतिक अवार्ड (शिल्ड)ले विभुषित गर्नको लागि 'डोनर किङ अफ दि इयर' घोषित हुन चाहनुहुने फराकिलो साँस्कृतिक हृदयका माहानुभावहरुको खोजी गरिरहेको जानकारी गराउन चाहन्छौँ।